



स्मृति

प्राचीन इजिप्टको मिथकअनुसार राजा ओरिसिसको विवाह इसिससँग हुन्छ। भाउजूमाथि गलत नजर लगाउने सेथले दाजु ओरिसिसलाई बन्दी बनाएर नाइल नदीमा बगाई आफू राजा बन्छ। पतिव्रता इसिसले नाइलबाट आफ्ना पति ओरिसिसलाई फिर्ता ल्याउँछिन्।

● त्रिवेणी

©nayapatrikadaily



त्रिवेणी

२०७६ कार्तिक १६ शनिबार ०९:०९:००

927 Shares   

साहित्य

# कालजयी साझा कथाहरू

## विमर्श

'खोलाहरू, तालतलैयाहरू, पोखरीहरू र झरनाहरू; हरेकका फरक नाम छन्, तर सबै जलयुक्त छन्। यस्तै छन् धर्महरू पनि। ती सबैमा सत्यता छन्,' मुहम्मद अलीको यो कथनमा कत्तिको सत्यता छ ? खैर! सत्यको खोजी चलिरहेको छ र चल्नेछ पनि। यद्यपि धर्महरूमा विविधता भने पाइन्छ। सायद विविधताले नै यिनीहरूलाई धर्मको उपमा दियो। आचमन गरेर मात्र खाना खाने मेरा बा, परमेश्वरलाई धन्यवादका मिठा शब्दहरू पस्केर भोजन ग्रहण गर्ने ख्रिस्टियन काका वा 'बिस्मिल्ला' पुकारेर भाग बस्ने र बिर्सेको घडीमा 'बिस्मिल्लाही फी अवालिही वा आखिरिही' भन्ने अस्लम काका, यी तीनको खाने तरिकामा मात्र यत्रो भिन्नता देख्छु म।

अहो! संस्कृति र चालचलनको कुरै नगरौं। गाईखाने र ढोग्ने दुईखाले परे यिनीहरू। मानव सभ्यताको आदिदेखि चलिआएको चालचलन, रीतिरिवाज र संस्कृतिबीच भीमकाय भिन्नता छ, तर म भिन्नता ओकेल्न चाहन्नँ। साँच्चै! म समानताको कुरा गर्नेवाला छु। हो, दुई वा सोभन्दा बढी समाजबीचको, संस्कृतिबीचको र सभ्यताबीचको।

विभिन्न धार्मिक तथा ऐतिहासिक पुस्तकको अध्ययन गर्दा म दुई भिन्न भूगोल तथा स्थानका मिथकहरूमा र इतिहासहरूमा समानता पाउँछु। आखिर समाज तथा संस्कृति नै फरक भएका मान्छेका कथाहरू किन उस्तै छन् ?

किन भयो फरक स्थानमा उस्तै लाग्ने ईश्वरको उपस्थिति ? किन एकखाले कथा भेटिन्छन् दुई भिन्न ग्रन्थका गर्भमा ? प्रश्नले प्रश्न मात्रै जन्माउँछन्, मेरो मस्तिष्कमा। म तिनै प्रश्नका जन्मदाता, उनै साझा कथाहरू ओकल्छु यहाँ।

**शुक्राचार्य, ओडिन र क्युक्लोपेस**

प्राचीन जर्मनको (नोर्स) मिथकमा ओडिनलाई मुख्य देवताका रूपमा उभ्याइएको छ, तर ओडिनको चरित्र चित्रण गर्दा उनीमा गुरुगुण प्रशस्त भेट्न सकिन्छ। उनको मुख्य गुण भनेकै प्यासी हो। ओडिनमा ज्ञानको भोक यथेष्ट भेटिन्छ। सोही भोकका कारण उनी एकपटक अर्डको तलाउमा पुग्छन्, जहाँको जल उनले खोजको ज्ञानले सिञ्चित हुन्छ।

दुर्भाग्य, तलाउको संरक्षकका रूपमा मिमिर नामको दानवलाई खटाइएको हुन्छ, जसले ओडिनलाई तलाउको जल पिउनबाट रोक्छ। ती दुईको बीचमा भएको वार्ताको फलस्वरूप मिमिरले ओडिनलाई एउटा सर्त मानेमा जल पिउन दिने भन्छ। उक्त सर्त हुन्छ ओडिनको आँखादान। ज्ञानका भोका ओडिनले आफ्नो एक आँखा तलाउलाई दान गरी जल पिएर ज्ञान प्राप्त गर्छन् र अरूलाई हस्तान्तरण गर्छन्।

पुराणका अनुसार वामन अवतार श्री विष्णुले राजा बलिसँग तीन पाइलाले ओगट्ने वस्तु दान मागेपछि बलि दिन तयार हुन्छन्। तर, वामन अवतार श्री विष्णुले दुई पाइलाले नै सम्पूर्ण ब्रह्माण्ड नापिदिन्छन्। तेस्रो पाइला राख्ने स्थान नहुँदा राजा बलिले आफ्नै शिर थाप्छन्। अन्ततः वामनले बलिलाई कुल्चेर पाताल लोकमा पु-याइदिन्छन्। दान दिने क्रममा असुर गुरु शुक्राचार्य, राजाले सम्पूर्ण कुरा दान गरिदिने भए र असुरहरूका निम्ति केही नरहने भयो भन्ठानी आचमन पूर्ण नहोस् भन्ने उद्देश्यका साथ कलशमा छिरेर जललाई रोक्न टुटीको मुख थुनेर बस्छन्। सो कुरा चाल पाएका वामन अवतार विष्णुले उक्त जलपात्रमा कुश घुसाइदिन्छन् र फलस्वरूप कुशले घोचेर शुक्राचार्यको एउटा आँखा फुट्छ।

उसरी नै ग्रिकमा क्युक्लोपेस एकआँखे भीमकाय जीव हुन्छ। ओडेसीले सो जीवलाई दश वर्षको सामुद्रिक यात्रापछि भेट्टाएको हुन्छ। सो कथनलाई होमरले बडो आकर्षक ढंगबाट व्याख्या गरेका छन्। उल्लिखित तीन प्रसंगमध्ये तीनवोटै प्रसंग जलसँग सम्बन्धित छन् र तीनैजना पात्रका एक मात्र आँखा छ। अझ रोचक पक्ष, ओडिन र शुक्राचार्यमा गुरुगुण साझा छ। क्युक्लोपेस र शुक्राचार्यमा भने असुर विशेषण साझा पाइन्छ।

**स्कुल्ला र कार्तिकेय**

स्कुल्लालाई होमरले ६ टाउके सामुद्रिक प्राणीका रूपमा उभ्याएका छन्। मिथकमा उसलाई उसकी सौताले अचम्मको जलप्रयोग गरेर ६ टाउकावाली बनाइदिई भन्ने पाइन्छ। उसको स्वर कुकुर्नीको जस्तो छ भनी कवि होमरले व्याख्या गरेका छन्। पुराणका अनुसार भने पञ्चभूतहरूको चेतनासँग संयोजन भई शिवपुत्र कार्तिकेयको जन्म हुन्छ, जसको ६ वटा टाउका हुन्छन्। शिवले कार्तिकेयलाई ज्ञानार्जनका खातिर ब्रह्माकोमा पठाँउछन्। कार्तिकेयले ब्रह्माजीलाई सुरुमा नै ॐ को अर्थ बताइदिन भन्छन्। ब्रह्मा स्वयंलाई अर्थ थाहा नभएकाले उनले पहिला सामान्य वर्णबाट सुरु गर्ने भन्छन्।

कार्तिकेय ब्रह्मालाई त्यागी पिताजीकोमा फर्किन्छन्। शिवले गुरु त्यागको कारण सोध्दा कार्तिकेयले कारण गुरु अज्ञानी रहेको बताउँछन्। शिवलाई पनि ॐको अर्थ थाहा नभएकाले कार्तिकेय आफैंले उनको कानमा अर्थ स्पष्ट पारेको कथन पुराणमा भेटिन्छ। उल्लिखित दुवै प्रसंगका दुवै पात्रमा छ, टाउका साझा छ।

**ग्रिकका देवताहरू**

हिब्रु पुराकथाअनुसार अब्राहमका ब्राह जना छोरा रहेको पाइन्छ। यसैगरी हिन्दू पुराकथामा आदित्य अर्थात् सूर्यहरू बाह्रजना रहेको स्पष्ट भेटिन्छ। वैदिककालमा भने आदित्यको संख्या यति धेरै थिएन र पछि उनीहरूको संख्या बढेर बाह्र पुगेको हो। ग्रिसमा पनि ओलम्पियन अर्थात् स्वर्गमा द्वादश संख्यामा देवताहरू रहेको मानिन्छ। तीमध्ये जेउज देवप्रमुख छन्। यसैगरी नेपाली मस्टो उपासनामा बाह्रजना मस्टो देवताको पूजा गरिन्छ। यहाँ, संख्या बाह्र साझा छ।

**सिल्भिया र कुन्ती**

कुमारी रानी सिल्भियालाई मंगलदेवले बलात्कार गरेपश्चात् दुईजना जुम्ल्याहा छोराहरू जन्मिन्छन्। समाजको नजरमा कुमारी नै छँदा बच्चा जन्मिएकाले पापका परिणाम मानिएका ती दुई छोराहरूलाई उनले तिबर नदीमा बगाइदिन्छिन्। पछि, ती बालकहरूलाई वृकभूमिको लुपर्कल नामक गुफामा बस्ने वृकी नामक पोथी ब्वाँसोले दुध चुसाएर हुर्काउँछे। अन्ततः फस्तुलस नामको गोठालाले भेटी उनीहरूलाई आफ्नी स्वास्नीलाई जिम्मा लगाँउछ।

उसरी नै काका कुन्तीभोजको घरमा छँदा ऋषि दुर्वासाको यथोचित सेवा गरेकीले दुर्वासाले कुन्तीलाई यो वरदान दिएका हुन्छन् कि उनले चाहेर उपासना गरेको खण्डमा हरेक देवताको दर्शन पाउनेछिन्। यसैक्रममा एक दिन ऋषिद्वारा प्राप्त वरदानले काम गर्ला वा नगर्ला भन्ठानेर प्रयोगका खातिर उनले सूर्यदेवको आराधना गर्छन्। सूर्यदेव प्रकट भएर उनलाई पुत्र अर्थात् कर्णदान गर्छन्। विवाहपूर्व सन्तान जन्मिएका कारण लाजले कुन्तीले कर्णलाई गंगामा बगाइदिन्छिन् जसलाई अन्ततः धृतराष्ट्रका सन्तानविहीन सारथि अधिरथले पाउँछन् र सन्तानका रूपमा हुर्काउँछन्। यहाँ दुवैजना राजकुमारीले कुमारी मानिँदा नै पुत्र जन्माएका छन् र दुवैले नदीमा नै फ्याँकेका छन्।

गजबको संयोग, दुवैका सन्तानलाई निम्नवर्गीय परिवारले भेट्टाउँछन्।

**सावित्री र इसिस**

सावित्रीको पतिव्रता धर्मको चर्चाले भारतवर्षको सीमा नाघिसक्यो। कथाअनुसार पिताले आफ्नो पति रोज्ने अधिकार स्वतन्त्र छाडिदिएकी सावित्रीले सत्यवान्लाई पतिका रूपमा मान्छिन्। मुनि नारदले सावित्रीलाई उनीहरूको विवाह भएको दिनले एक वर्ष मात्र सत्यवान् बाँच्ने र सत्यवान्को पिताको राज्य सकिएको र उनी दृष्टिविहीनसमेत रहेको कुरा बताउँछन्। सावित्री सबै कुरा जान्दाजान्दै सत्यवान्सँग बिहे गरेर दरबार त्यागी उनैसँगै वनमा बस्न थाल्छिन्। विवाहको एक वर्ष पुगेको दिन सत्यवान् वनमा दाउरा काट्दाकाट्दै मृत्युवरण गर्न पुग्छन्। मरेको सत्यवान्लाई लिन आएका यमसँग बडो बिन्ती र तर्कका साथ वार्ता गरेकी सावित्री अन्ततः सत्यवान्लाई जीवित फर्काउन सफल हुन्छिन्।

प्राचीन इजिप्टको मिथकका अनुसार राजा ओरिसिसको विवाह इसिससँग हुन्छ। भाउजूमाथि गलत नजर लगाउने सेथले दाजु ओरिसिसलाई बन्दी बनाएर नाइल नदीमा बगाई आफू राजा बन्छ। पतिव्रता इसिसले नाइलबाट आफ्ना पति ओरिसिसलाई फिर्ता ल्याउँछिन्। पुनः सेथले ओरिसिसलाई टुक्राटुक्रा गरी चार दिशामा फालिदिन्छ। पतिप्रतिको प्रेमका कारण इसिस चरा बनेर चार दिशा डुलीकन पतिको हरेक अंग बटुलेर ल्याउँछिन्, तर दुर्भाग्यवश लिंग भेटिँदैन। इसिसको अथक प्रयासपश्चात् पनि उसको लिंग भेटिँदैन, तर ऊ मृत्युको राजा हुन पुग्छ।

**प्राचीन इजिप्टको मिथकअनुसार राजा ओरिसिसको विवाह इसिससँग हुन्छ। भाउजूमाथि गलत नजर लगाउने सेथले दाजु ओरिसिसलाई बन्दी बनाएर नाइल नदीमा बगाई आफू राजा बन्छ। पतिव्रता इसिसले नाइलबाट आफ्ना पति ओरिसिसलाई फिर्ता ल्याउँछिन्।**

इसिसले पतिको जीवनका खातिर गरेको संघर्षले उनीप्रति हरेकको श्रद्धा अपरिमेय छ। उल्लिखित दुवै कथनहरू पतिव्रता नारीहरूको कथा थियो। पतिव्रता धर्मको पालना दुवैका साझा गुण हुन्।

साझापन खोतल्दै जाँदा जताततै साझा मात्र भेटिन्छन्। पुराणको श्वेतवाराह कल्प र बाइबलको जलप्रलय जहाँ नोवाले हरेक जातिका एक–एक जोडीलाई लिएर परमेश्वरले भनेअनुसारको डुंगा निर्माण गरिबसेको हुन्छ, दुवैमा साझा कथा। विभिन्न सम्प्रदायका मानिसहरूले वृक्ष नै पुज्ने चलन अनौठो लाग्छ मलाई। अझ ब्राह्मणहरूको त एक गोत्र औदुम्बर छ जसको अर्थ डुम्री वृक्ष हो।

ग्रिक अरबी र देवनागरी लिपिका प्रथम वर्ण क्रमशः अल्फा अलिफ र अ छन्। यी तीनैमा अ ध्वनि साझा छ। ओडिनपछिका अर्का प्राचीन जर्मनका मुख्य देवता थोरले प्रयोग गर्ने वज्र स्वस्तिक चिह्नसँग मिल्दो छ। फरक धर्ममा फरक भए पनि सिंगो जनावर नै पुज्ने चलन छ। एउटा धर्मकाले जनावर पुज्छन् भने अन्यले जनावरको कान मात्र वा खुट्टा मात्र नपुजी सिँगो जीवलाई नै किन पुजेका होलान् ?

आखिर एक–अर्काको सम्पर्कमा नआएका मानिसहरूमा एकैखालको चेतनाको विकास कसरी भयो होला ? ग्रन्थकारहरूले पनि सल्लाह गरेझैं साझा कथाहरू कसरी लेखे होलान् ? ईश्वरका संख्यासमेत साझा हुनु कस्तो खालको संयोग ? प्रश्नहरूद्वारा लखेटिइरहेको म सायदको भरमा चित्त बुझाउन बाध्य हुन्छु। सायद यो कारणले यस्तो भयो कि ! मसँग यस्तो सोच्नुको विकल्प पनि छैन। यही हो भनेर ठोकुवा कारण दिने कोही पनि भेटिनँ।

जीवको चेतनामा प्रकृतिको प्रभाव व्यापक हुन्छ। यदि प्रकृति, परिवेश र प्रविधि अहिलेको विश्वकै कायम गर्ने र मानव सभ्यताको यहींबाट विकास थालनी गर्ने हो भने अमेरिकालगायतका विकसित राष्ट्रमा विकास भएको सभ्यताको मिथकमा ठूलाठूला बंगलामा बस्ने तथा अहिलेका रोबर्टजस्ता लाग्ने ईश्वर वा असुरको उपस्थिति पक्कै हुन्छ होला। ती मानिसहरूको ईश्वरले प्रयोग गर्ने अस्त्र पनि अहिलेको आधुनिकजस्तो हुन्थ्यो सायद।

सोमालियाको कुनै विकट गाउँमा सोही समयमा विकास भएको सभ्यतामा भने भोकमरीसँग सम्बन्धित ईश्वर नहोलान् भन्न सकिँदैन। मरुभूमिका मान्छेले बालुवाका देवता बनाउँथे पक्कै र उनीहरूमा रूख वा जलीय जीव पुज्ने चलन चल्दैनथ्यो। समुद्र नै नदेखेका मानिसहरूका कथामा सामुद्रिक जीवरूपी देवताको उपस्थिति पक्का नहोला र स्थलीय ईश्वर÷दैत्य निर्माण गर्लान् उनीहरूले। अनन्तसम्म फैलिएको गुफामा बस्नेहरूले अँध्यारोको देवता बनाउँथे होलान्।

जन्मजात पूर्ण दृष्टिविहीन भएर मान्छे जन्मने ठाउँ हुँदो हो त स्वाद, गन्ध र ध्वनिसँग सम्बन्धित मिथक जन्मेलान्। कसैले पनि कान नसुन्ने मान्छेहरूको सभ्यतामा ध्वनिलाई स्थान पक्कै हुँदैन। अचम्मको कुरा, ब्याक्टेरियारूपी ईश्वरको उपस्थिति कुनै धर्ममा भेटिन्न, कारण माइक्रोस्कोप हो, जुन उतिवेला अस्तित्वमा थिएन। यस्तै गरीकन भूगोल, भूमि र पर्यावरण नुसारका आ–आफ्ना कथाहरू हुन्थे होलान् मान्छेका।

उसो भए माथि उल्लिखित प्रसंगमा साझा कथाहरू किन आए ? सायद ती कथाहरू जन्मेको स्थान र काल फरक भए पनि सामाजिक परिवेश र मानिस–मानिसबीचको सम्बन्ध उस्तै खालको थियो। मान्छेका सामाजिक व्यवहार लगभग

एकैखालका हुँदा हुन्। समाजको विकासअन्तर अहिलेको न्युयोर्क र सोमालियाको विकट गाउँबीचको जस्तो थिएन होला। हो, फरकपन पक्कै थियो, तर साझापन हावी थियो।

फरक स्थानमा बसे पनि मानिसहरूले खाने खानाका परिकारमा धेरैखाले खनिज पदार्थ तथा भिटामिनको रूप तथा मात्रा लगभग समान थियो। खानाले चेतनामा पार्ने प्रभावको प्रतिफल एकै किसिमको चेतनाको विकास ती मानिसहरूमा भएको हुन सक्छ। समान खालको पर्यावरणमा हुर्केका लेखक–मानिसहरूमा समान खालको चेतनाको विकास हुनु नौलो होइन।

फरक स्थानका सभ्यता भए पनि एकैखाले समस्यासँग जुध्न परेकाले उस्तै–उस्तै शिल्प र सीपको विकास ती मानिसहरूमा भएको हुन सक्छ। सोही समान चेतनाको प्रतिफल साझा कथाहरू तथा मिथकहरू जन्मे भन्ने मेरो मत छ। कारण भने फरक हुन पनि सक्छ। कारणलाई छोडी कथनमा लाग्ने हो भने साझा कथाहरू साँच्चै अनौठा लाग्छन्। साँच्चै प्रिय छन् ती मिथकहरू। साझा पात्रहरूलाई तुलना गर्नुको आनन्द आफैँमा बेग्लै छ। अझ विशेषगरी साझापनमा घोल्तिनुको मज्जा मर्मस्पर्शी छ। हो, साझा कथाहरू कालजयी छन्। यस्ता साझा कथा लेख्ने लेखकहरूको जय होस्।




Naya Parkashan Pvt. Ltd.
Star Mall, Putalisadak, Kathmandu Nepal
Phone: +977 1 4012566 | 4012666 | Fax:+977 1 4012569
Email: enayaonline@gmail.com

Executive Director: Sushil Thapa
Chairman/ Editor in Chief: Krishna Jwala Devkota